mandala
theatre-nepal

मितिः २०७३ आश्विन ४ गते

# प्रेस विज्ञप्ती

**विषयः घुम्ती रंगमञ्च भ्रमण कार्यक्रमको आयोजना गरिएको बारे ।**

प्रस्तुत विषयमा यस मण्डला नाटक समूहको कलाकार टोली "विगतसँग व्यवहार" कार्यक्रम लिएर पश्चिम नेपालको भ्रमणमा निस्केको जानकारी गराउँदछौं । मण्डला थिएटर नेपालको आयोजना तथा स्थानीय संघसंस्थाहरूको सहकार्यमा आयोजित यो कार्यक्रमअर्न्तगत 'स्मृतिका लागि घुम्ती रंगमञ्च भ्रमण' नामक मोवाइल थिएटर प्रस्तुति विशेष आकर्षण रहनेछ । कार्यक्रममा बर्दिया, कैलाली र दाङ जिल्लाका विभिन्न समुदायमा मण्डलाको घुम्ती रंगमञ्च बस (मोवाइल थिएटर स्टेज) जुनकिरीमा नाटक आधा सत्यको मञ्चन गरिनेछ । २०७३ असोज ४ गते शुरू हुने यो भ्रमण कार्यक्रम १५ दिनको रहेको छ । भ्रमणका लागि मण्डलाका कलाकारहरूको नेतृत्व संस्थाका महासचिव तथा कला निर्देशक राजन खतिवडाले गर्नेछन् ।

आज एक कार्यक्रम गर्दै मण्डला नाटकघरबाट घुम्ती रंगमञ्च बससहित कलाकार टोलीलाई विदाई गरिएको छ । कलाकार टोलीलाई मण्डला नाटकघरमा आजदेखि प्रदर्शन हुने नृत्य नाटक ज्यानमायाको टोलीले साइतस्वरूप दही खुवाएर बिदा गरेको थियो । बिदाई समारोहमा घुम्ती रंगमञ्च निर्माण सम्पन्न गर्ने इन्जिनियर टोलीलाई मण्डलाका निर्देशक राजन खतिवडाले खादा तथा कदर-पत्रद्वारा सम्मानित गरे । रोबोट इन्जिनियर अनिल कार्कीको नेतृत्वमा सुरेश कार्की, रामशरण रेग्मी, जोनेन क्षेत्री, रोहित पौडेल र हुम बिसीले घुम्ती रंगमञ्चको निर्माण गरेका हुन् । यसअघि एडेन इन्जिनियरिङले घुम्ती रंगमञ्चको निर्माण गरेको भएतापनि प्राविधिक कठिनाई आएपछि बसको पुनर्निमाण गरिएको थियो ।

नाटक आधा सत्य बेपत्ता नागरिकका परिवारहरूको जीवनभोगाईमा आधारित छ । दशवर्षे सशस्त्र द्वन्द्वका क्रममा बेपत्ता पारिएका नागरिकका परिवार तथा तिनका पीडाहरूप्रति समानूभूति जनाउन मण्डला थिएटर नेपालले गत भदौमा नाटकको उत्पादन तथा पहिलो मञ्चन गरेको थियो । 'स्मृतिका लागि घुम्ती रंगमञ्च भ्रमण'को उद्देश्य पनि बेपत्ता परिवारहरूप्रति कलाकर्मी तथा आम जनसमुदायको तर्फबाट ऐक्यवद्धता जनाउन रहेको कार्यक्रमका निर्देशक राजन खतिवडाको भनाइ रहेको छ । त्यसबाहेक पीडितहरूको समस्या सम्बोधनका लागि सरोकारवाला निकायहरूको ध्यानाकर्षण गराउन जनस्तरबाट दवाव सिर्जना गर्नु पनि कार्यक्रमको लक्ष्य रहेको छ ।

मण्डलाको काठमाडौं उपत्यकाबाहिर घुम्ती रंगमञ्च बस जुनकिरीसहितको यो पहिलो कार्यक्रम हो । यसअघि काठमाडौं उपत्यकाभित्रका भूकम्पप्रभावित १५ स्थानहरूमा घुम्ती नाटकघर जुनकिरीसहित नाटक 'मनचिन्ते फिरन्ते'को मञ्चन गरिएको थियो । यसपछि पनि मण्डलाले पूर्वका पाँच शहरहरूमा जुनकिरी सहित नाटक मनचिन्ते फिरन्ते र डिग्री माइला मञ्चनको योजना बनाएको छ । लेट्स इन्टरटेनमेन्ट प्रालिसँगको सहकार्यमा गरिने पूर्वाञ्चल नाट्य यात्रा २०७३ अर्न्तगत धरान, इटहरी, बिराटनगर, बेलबारी र दमकमा कार्तिकको पहिलो साता उल्लिखित नाटकहरू मञ्चन गरिनेछ ।

कार्यक्रमको प्रचारप्रसार तथा सफलताका लागि आआफ्नो क्षेत्रबाट सहयोग गरिदिन हुन सम्बन्धित सवै दर्शक, शुभचिन्तक, पत्रकार, सरकारी तथा गैरसरकारी निकाय, नागरिक समाज, राजनीतिक दल तथा संघसंस्थाहरूमा हार्दिक अनुरोध गर्दछौं ।

कार्यक्रमसम्बन्धित थप जानकारीका लागि ०१४२४९७६१ वा ९८५१०४४९७७ मा सम्पर्क गर्न सकिनेछ ।

सद्भाव, सहयोग तथा सुझावको अपेक्षासहित ।

.............................................
सोमनाथ खनाल
कार्यक्रम संयोजक
मण्डला थिएटर नेपाल